नेहरू बाल पुस्तकालय



# मदर टेरेजा

लीला मजुमदार

बची कारकारिया

अनुवादक

पूर्ण राई



नेशनल बुक ट्रस्ट, इंडिया



नोबल पुरस्कार प्राप्त गरेपछि मदर टेरेजा

## हामी सबैकी आमा

आमा सबैका हुन्छन्। जसले हामीलाई भोक लागेको बेला खानेकुरा दिने गर्छिन्, हामी बिमारी हुँदा सेवा-सुसार गर्छिन्। हामी हताश र निराश भएको बेला ढाढ़स दिने गर्छिन्। तर यहाँ अन्य आमाहरू भन्दा बेग्लै एक जना आमा छन्। जसले यी सबै काम गर्छिन्। तिनी हुन्-हामी सबैकी आमा-मदर टेरेजा।

कलकत्ताको गल्लीमा मर्न आँटिका, भियतनाममा घाइते भएका, युथोपियाका भोकाहरू, संयुक्त राष्ट्र अमेरिकाका एक्लो मानिसहरू, आयरलेण्डका टुहुरा-टुहरी अनि अष्ट्रेलियाका विकलांगहरू-यी सबै मदर टेरेजालाई नै हेर्ने गर्छन्। सेतोमा मोटो नीलो किनारा भएको साड़ी लगाउने यी नारीको सानो अंगालोले दुःख र कपटको संसारलाई अंगाल्दछ।

यी नारीलाई हेर्दै संसार अचम्भ मान्छ, जसमा पर्वत हल्लाउने शक्ति छ। चाहिएको समय कताबाट पैसा आँउछ भन्ने कुरा संझी उनी कहिल्यै–समय फाल्दिनन्। यी कुरा ईश्वरले पूरा गरिदिनेछन् भन्ने कुरा उंनी जान्दछिन्।

सन् १९७९ को नोबल पुरस्कार लगायत अन्य धेरै पुरस्कार उनले पाएकी छन्। उनको लागि धन वा पैसाको अर्थ एउटा नयाँ होम अर्थात् आश्रम खोल्न सक्नु हो, गरीबहरूको लागि एउटा अर्को घर बनाउन सक्नु हो। उनको लागि मान र इज्जत भनेको गरीब बिमारी अनि बेसहाराहरूको के खाँचो छ त्यो पूरा गर्नु हो।

मदर टेरेजाको कथा यही हो, जो पादरिनी अर्थात् 'नन्' हुन्। जसले कस्तै अप्ठेरो, मन नपर्ने खाल्के कामलाई पनि 'यो मेरो काम होइन' भनेर कहिल्यै भन्दिन्।

कलकत्तामा मदर टेरेजा अनि पोप जोन पल-दोस्रो



## अग्नेश नामकी एउटी केटी

मदर टेरेजाले शुरू गर्नुपर्ने सेवा कार्य र अडर अफ् मिशनरिज अफ् च्यारिटी खोल्नुपर्ने कलकत्ताका हिलो-मैलाले भरिएको हुगलीदेखि धेरै धेरै टाड़ो र धुवाँ-धूलोले धापिएको झुग्गी-झोपड़ीवाला इलाका-देखि हजारौं माइल टाड़ामा भएको यूरोपको एड्रयाट्रिक सागर किनारदेखि यो कथा शुरू हुन्छ।

यो कथा अगस्त २६, १९१० सालदेखि शुरू हुन्छ। यही दिन युगोस्लाभियाको स्कोप्जे नामको शहरमा एउटा बालिकाको जन्म भएको थियो। उनका माता-पिता अल्बाना मूलका थिए। तिनीहरूले आफ्नी छोरीको नाम अग्नेश गोनसा बोजासिउ राखे। अग्नेश देशका अन्य मध्यवर्गिय नानीहरू जस्तै आफ्ना दाजु र दिदीसित खेल्दै, आमा-बाबुलाई पछयाउँदै बड़ी। ऊ बाबुको खूबै प्यारो थिई। उनका बाबुले खिच्री-मिच्रीको एउटा दोकान चलाउँथे।

अग्नेश चार वर्षकी मात्र भएकी थिई प्रथम विश्व युद्ध शुरू भयो। जसको कारणले उसको शान्पिूर्ण जीवनको धारा नै बदलियो। यसको तीन वर्षपछि अग्नेशका बाबुको मृत्यु भयो। तब उसकी आमाले आफ्ना तीन जना नानी हुर्काउन धेरै

संघर्ष गर्नुपरेको थियो ।. देशमा युद्धको कारणले धेरै कठिनाई र कमीहरू ल्याए । यी सब समस्या सहाससँग झेल्दै, पाएको जस्तै पनि काम गर्दै, अग्नेशकी आमा आफ्नो सानो परिवारलाई देखरेख गर्न र एकसाथ राख्न सफल भइन् ।

मदर टेरेजा आफ्नो बाल्यकाल विरलै अर्थात् कहिलेकाहिं मात्र कुरा गर्छिन् र दुइवटा घटनाको याद गर्छिन् । जसबाट उनी कस्तो देखरेख र सावधानीको साथ बड़ेकी थिइन् भन्ने कुरा थाहा लाग्छ । घटना यस प्रकारका छन्–एक बेलुकी अग्नेशकी साथी आएर एकजना मान्छेको विषयमा कुरा गर्दैगर्दा अचानक बत्ती निभ्यो । पछि उनकी आमाले भनिन्–साथमा नभएको मान्छेको विषयमा नानावलीका कुरा गर्नु उज्यालो नचाहिने हुनाले जानी जानी बत्ती निभ्याइ दिएकी हुँ ।

दोस्रो घटना–अग्नेशसँगै पढ्ने उसको एक जना साथीलाई अग्नेशकी आमाले मन पराउँदैन थिइन् । यस विषय उनले कुनै भाषण नदिएर आफ्नी छोरीलाई एक बास्केट आइफल ल्याउन लगाइन् अनि एउटा कुहेको आइफल बीचमा राखिदिइन् । केही दिनपछि उनले आइफलको बास्केट हेर्न लगाइन् । अचम्भ! सबै आइफल कुहेका थिए । त्यस घटनाबाट किशोरी अग्नेशले लिनुपर्ने पाठ लिई अनि त्यो पाठ कहिल्यै भूलिन पनि ।

आफ्नो मिशन अर्थात् अभियान विषय कहिले निर्णय लिनुभो भनी सोध्दा यस विषय तोकेर भन्दिनन् । तर एउटा साधारण जीवन बिताइरहेकी भए तापनि आफ्नो जीवनमा केही खाश प्रकारको भिन्न काम गर्नुपर्छ भन्ने सत्य उनलाई सानैमा थाहा भएको थियो । उनको जन्म एउटा साँचो क्याथलिक परिवारमा भएको थियो । यसका साथै-उनका धार्मिक रूची अनि बाल्यकालमा देखेको युद्धको विभीषिका र भोगेको कठिनाईले गर्दा उनी सांसारिक सुख-सुविधादेखि टाड़ै रहिन् । जेसुइट पाद्रीहरूले कलकत्तामा गरेको सेवा कार्यका कुरा सुनेर पनि उनी प्रभावित भएकी थिइन् । यी सब कारणले गर्दा बाह्र वर्षको उमेरमा नै आफ्नो भविष्य त्यहीं (कलकत्ता) छ भन्ने कुरा उनलाई थाहा थियो ।

अग्नेशले अठार वर्षको उमेरमा आफ्नो देश युगोस्लाभियामा स्कूल शिक्षा समाप्त गरिन् । यसपछि संसार त्याग गरी नन् (पादरिनी) बन्ने विचार गरिन् । अग्नेशले भारतमा् विशेष गरी बंगालमा काम गर्ने विचार गरिसकेकी थिइन् । यसैकारण उनले लरेटो नन् समुदायमा भर्ना लिइन् । किनभने त्यो समुदायले कलकत्तामा काम गर्दै

थियो। अग्नेशले डब्लिन (आयरलेण्ड)–को लोरेटो अव्बेबाट ननूको दीक्षा लिइन् अनि आफ्नो परिवार, देश सबै त्यागी विदेशमा सेवा गर्न तयार भइन्। यसरी उनी सन् १९२८ सालमा सन्त मेरिज स्कूल, इन्टालीमा, कलकत्ताकी शिक्षिका बनी भारत आइपुगिन्।

यसपछि उनले कहिल्यै पछि फर्केर हेरिनन्। आफ्नो सेवा कार्यबाट अन्तर्राष्ट्रीय सम्मान प्राप्त गर्ने दिशामा अग्नेश गोनसा बोजासिउद्वारा एउटा बलियो र पहिलो कदम चालिइसकेको थियो।

**मदर लोरेटो कन्भेण्टमा**



## सेवाको पथमा

इन्टालीस्थित कन्भेण्ट इलाका सुन्दर र शान्त छ। यो स्कूल पूर्णतया केटीहरूको लागि हो। यहाँका छात्राहरू प्रायः मध्यवर्गीय र गरीब छन्। यहाँ हिन्दू, मुसल्मान, खिस्तान सबै छन्। तिनीहरूको भूगोलकी शिक्षिका आफ्ना छात्राहरूप्रति खूबै समर्पित र स्नेहशील थिइन्। यसकारण उनी छात्राहरू बीच प्रिय थिइन्। उनीसँग काम गर्ने अन्य नन् अर्थात् भिक्षुणीहरू धार्मिक र परिश्रमी थिए। उनीहरू टाउको छोप्ने परम्परागत कालो-सेतो साड़ी लगाउँथे, साधारण तर भरपेट खाना खान्थे। त्यहाँको जीवन शान्त, सबै कुरा मिलेको र सुखी थियो।

तर त्यस कन्भेण्टको नजिकै फोहोर-मैलाले भरिएको एउटा झोपड़-पट्टी इलाका थियो। जुन इलाकाको नाम भने खूबै मीठो 'मोतीझील' थियो। जहाँका मानिस भोका-नांगा थिए, बेरोजगार थिए। खाना नपाएका नानीहरू मोतीझीलको धूलो-मैलामा सुस्ताउँथे।

कन्भेण्टको आफ्नो कोठाको खिड़कीबाट यस्तो दृश्य देख्ता किशोरी मदर टेरेजाको हृदय छटपटिन थाल्यो। सांसारिक कुराहरू त्याग गर्दैमा सबै कुरा हुँदैन

रहेछ भन्ने सत्य उनलाई छलर्ग भयो। यसप्रकार मदरले बिस्तारै गरीबी, अशिक्षा, अज्ञानता र रोग-बिमारको विरूद्ध अनि सबैभन्दा बेसी माया र प्रेम नपाउनेहरूकोलागि माया र प्रेम दिने युद्ध गर्नुपर्ने रहेछ भन्ने कुरा बुझन थालिन्।

समय बित्दै जाँदा मदर त्यो मोतीझील इलाकामा दवाई-पानी लिएर जान थालिन्। उनीसँग उनका केही छात्रा पनि हुन्थे। जसले हप्तामा एकपल्ट आफ्नो खाजा खाने पैसा मोतीझीलका गरीबहरूकोलागि दिन्थे।

मदरले यसप्रकार आफ्नो सेवा कार्यको अभियान शुरू गरिन्। यति हुँदाहुँदै पनि उनले सत्र वर्षसम्म लोरेटोका ननूहरूसँग शिक्षिकाको काम गरिन्। ती विद्यालयहरू आफ्ना अनुशासन र उच्च स्तरको पढ़ाईका निम्ति प्रसिद्ध र परिचीत थिए। तर मदरको हृदयमा भने एउटा यस्तो संकल्पको जन्म भइरहेको थियो, त्यो विचार थियो-मानव सेवाका निम्ति ईश्वरको चरणमा समर्पण।

आफ्नो यस्तो संकल्प वा विचार विषय मदरलाई १० सितम्बर १९४६ को दिन स्पष्ट ज्ञान भयो। त्यस दिन उनी हिमालयको काखमा रहेको सन्त मेरीज स्कूल, खरसानतिर गइरहेकी थिइन्। यसै समय उनले ईश्वरको पुकार सुनिन्। यत्रो वर्षसम्म मनमा खेलाइरहेका विचारहरू विषय ईश्वरले स्पष्टसँग आज्ञा दिनुभएको मदरलाई अनुभव भयो। उनलाई थाहा भयो – अब बाटामा जे जस्तै वाधा-विघ्न आउन् त्यो बाटो जानैपर्छ।

यस प्रकार पहाड़को सानो रेलको बाटो भएर त्यहाँका सुन्दर प्राकृतिक दृश्य, आकाश छुन पुगेको हिमाल, देवदार, भोजवृक्ष र धुप्पीको वन-जंगल र झरनाहरू हेर्दै जाँदा मदरलाई यीशूले गराउन चाहेका काम विषय ज्ञान भयो। उनलाई कन्भेण्टमा भएको आरामदायक जीवन त्यागी संसारका निम्नभन्दा निम्न मानिसहरूबीच बसी काम गर्नुपर्छ भन्ने स्पष्ट भयो।

मदरले कन्भेण्ट छाड़ी कलकत्ताका फोहोर-मैला इलाकामा बसी त्यहाँ काम गर्ने इच्छा मदर सुपिरियरलाई बताइन्। फलतः उनले आफ्नै "अडर" र पछि रोमबाट एक वर्षसम्म विचारको लागि यो काम थाल्ने आदेश पाइन्। यसपछि उनले लोरेटोका ननूहरूले लगाउँदै आएको कालो-सेतो साड़ी त्यागी सेतोमा मोटो नीलो किनारा

भएको साड़ीमा आफ्नो अभियानमा निस्किन्। त्यस बेला उनका हातमा बाइबल, देब्रे-काँधमा क्रस अनि धनको नाममा पाँच रुपियाँभन्दा कम्ति पैसा भएको भए तापनि हृदयमा अपार विश्वास र सहास थियो। त्यो साल सन् १९४८ साल थियो। यही वर्ष उनले भारतको नागरिकता पनि लिइन्। यसप्रकार ईश्वरको काम गर्न आफूले छानेको कलकत्ता शहरमा आएको बीस वर्षपछि मदर टेरेजाले त्यो जिम्मेवारी पाइन् जुन जिम्मेवारी उनलाई ईश्वरले दिन चाहेका थिए।

**बेसहाराहरूलाई खाना**



## उपायहरूको खोजीमा

मदर टेरेजालाई आफ्नो काम अघि बड़ाउनलाई त्याग र बलिदान मात्र होइन अरू धेरै कुराको खाँचो पर्छ भन्ने कुरा थाहा थियो। यसैकारण उनले बिहार राज्यको पटना शहरमा भएको अमेरिकन ट्रेनिङ सेन्टर फर मेडिकल मिशनरिजमा तालीमको आवेदन पठाइन् र त्यहाँबाट मेडिकल नर्सको तालीम लिइन्। यसो गर्नुमा उनको उद्‌देश्य रोग-बिमारसँग लड्न सक्नु थियो। किनभने इन्टालीको कन्भेण्टमा हुँदा नै मानिसका चार शत्रुमध्ये रोग-बिमार एउटा हो भन्ने कुरा उनले गमेकी थिइन्।

पटनाको तालीमपछि उनी कलकत्ता फर्किइन्। जहाँ उनको अघाड़ि धेरै विघ्नवाधा मुख बाएर बसिरहेका थिए। कलकत्तामा मदर केही समयसम्म द लिटल सिस्टर्स अफ द पुवर नामको संस्थामा बसिन्। यस संस्थाको कार्य क्षेत्र सीमित थियो। तिनीहरूका हात कलकत्ताका सड़क र गल्लीमा भएका घरबारविहीन मानिस, बिमारी, रोगी अनि मर्न लागेका असहाय मानिससम्म पुग्दैन्थे। तर मदरको आन्तरिक

इच्छा र अभियानको उद्‌देश्य यस्ता असहायहरूको सेवा गर्नु थियो। मदरलाई यस प्रकारको काम गर्नु हो भन्ने सत्य पनि थाहा थियो। उनकोलागि सामाजिक सेवा गर्नु ईश्वरको सेवा गर्नु थियो। यसैकारण मदर टेरेजा अनि उनका सिस्टरहरूद्वारा स्थापित संस्थामा यी सब काम कसका निम्ति गरिँदैछ यस कुरा नबिर्सन अनि अरू मानिस डर र घीनले भाग्नसक्ने, यस्ता कार्य गर्नमा ईश्वरबाट शक्ति र सहास बटुल्न प्रार्थनामा विशेष समय दिइन्थ्यो।

आफूले सेवा गर्न चाहेका मानिस समक्ष पुग्न आफू पहिला तिनीहरू जस्तै बन्नुपर्छ भन्ने कुरा मदर जान्द थिइन्। यसैकारण मदरले ती मानिसले जस्तै लुगा लगाइन्, ती मानिस जस्तै बसिन्, खाना खाइन् र ती मानिसले जस्तै कुरा गरिन्। उनले सुतीको मामूली साड़ी पहिरिन्, लुगा फाटा स्वयंले धुइन्, भूइँ पुछिन। दाल-भात हातैले खाइन। यस्तै धेरै अघि नै उनले बंगला भाषा लेख्न-पढ्न सिकेकी थिइन्। उनी यो भाषा सहजसँग बोल्छिन्।

मदरले कन्भेण्ट छोड़ेकै समय आफ्नो सेवा कार्य शुरू भएपछि मोतीझील इलाकामा एउटा स्कूल खोल्ने विचार गरेकी थिइन्। उनको यो इच्छा २१ दिसम्बर १९४८ को दिन पूरा भयो। तर त्यस दिन मदरको स्कूलको कुनै दैलो खोलिएन। किनभने त्यहाँ दैलो नै थिएन। यति मात्र होइन त्यस स्कूलमा बस्ने बेञ्ची र लेख्ने बोर्ड पनि थिएनन्। खाशमा मदरले कति जनाको सहायता लिएर एउटा मैला र कसिंगारले भरिएकी ठाँउ सफा गरी त्यही गन्धे-मैला झोपड़पट्टीका भोका-नांगा नानीहरूलाई भूइँमै एउटा लौरोले अक्षर कोरी शिक्षा शुरू गरिदिएकी थिइन्। त्यो प्रथम दिनको शिक्षा प्रार्थनासँग शुरू भएर प्रार्थना मै सकिएको थियो।

यस प्रकार एउटा नयाँ अध्याय शुरू भएको थियो। यसले खबरकागजको मुख्य समाचारको रूप ता लिन सकेको थिएन होला तर पनि यो कुरा वरिपरि भने फैलियो। तब कसैले टेबल, कसैले बेञ्ची दानमा दियो। कुनै अपरिचित मान्छे आएर स्कूलको लागि केही पैसा चढ़ायो। विद्यार्थीको कमी थिएन। ती नानीहरूलाई शिक्षा लिने यस्तो मौका अघि कहिल्यै दिइएको पनि थिएन। त्यहाँ आउनेहरू धेरै जना कौतुहलले मात्र आएका थिए तर जति आए सबै जना नै स्कूलमा बसे। यसप्रकार मदरले

भिक्षुणीहरू डक्टरी सहायतामा व्यस्त (आँउदो पृष्ठ)

मानिसको दोस्रो शत्रु अज्ञानतालाई हातमा लिइन्। उनको कामले बिस्तारै प्रचार र सहायता पाउन थाल्यो। मदर र उनका सिस्टरहरूले गरीब बस्तीहरूमा खोलेका यस्ता स्कूलहरू आज सयभन्दा बेसी पुगेका छन्।

**एकजना भिक्षुणीबाट स्वास्थ्य सम्बन्धि सरसल्लाह**



## मिशनरिज अफ् च्यारिटीको जन्म

सन् १९४९ सम्म मदरलाई जस्तै होस् बस्नलाई अनि यस्ता कामकोलागि आफ्नै ठाँउ अनि आफू जस्तै साधारण र त्यागी- सहयोगीहरू चाहिने रहेछ भन्ने कुरा थाहा भयो। तर आउनलाई तयार कोही राजी थिएनन्। तर मदरलाई चाहिएको कुरा ईश्वरले दिनेछन् भन्ने कुरामा विश्वास थियो। यस्तैमा मदरसमक्ष माइकल गोम्स नाममा एकजना सहृदयी व्यक्ति आए। तिनी मध्य कलकत्तामा वस्थे। माइकललाई एक जना ननूलाई घर चाहिएको छ भन्ने कुरा फादर हेनरीले बताएका थिए। माइकलकी आमा स्वर्गे भइसकेकी थिइन र उनको कोठा खाली थियो। त्यो घर ठीकैको साथै मदरको पहिलो घर इन्टालीदेखि साह्रै टाढ़ो पनि थिएन। मदर आएर आफ्नो घरमा बसिदिए आफ्नो इज्जत हुने कुरा माइकलले अनुभव गरे। मदरलाई किराय लिने ता कुरै आएन भने घरमा भएको जति फर्निचर मदरलाई चलाउन दिनु पनि माइकल राजी थियो। भनेपछि मदर त्यहाँ आउने भइन्। उनको कुनै कुरा खर्चेलु थिएनन्। उनले आ्फूसँग एउटा काठको बाकस ल्याइन्। जसले टेबलको काम पनि गर्थ्यो। अरू कुरामा मदरका एउटा

सानो सुटकेश, बाइबल, र क्रस थिए। एउटा चौकी चाहिँ गोम्स परिवारबाट पाइन्।

माइकलकी छोरीले भने अनुसार एक दिन मदर दिनभरि झुग्गी-झोपड़ीवाला बस्तीमा काम गरी थकित र निथ्रुक्क भिजेर आइपुगिन्। यति नै बेला दुइजना भोको मानिस त्यहाँ आइपुगे। मदरले अब के गर्ने ? यस्तो अवस्थामा उनले आफ्नो दाता गोम्सलाई यो कुरा जनाइन्। तब त्यहाँ दुइ थाल भात पठाइयो।

मार्च महीनामा मदरले सुभाषिनी दासलाई आफ्नो पहिलो स्वयं सेविकाको रूपमा पाइन्। सुभाषिनी इन्टालीमा मदरकी छात्रा थिइन् मोतीझीलमा मदरसँग काम गरेकी थिइन्। उनले मदर अनि ईश्वरको काम गर्ने वाचा बाँधिन् अनि मदरको पहिलो नाम लिई सिस्टर अग्नेश भइन्। उनी सिस्टरको दाहिने हात हुन्। मदर नभएको समय सिस्टर अग्नेशले नै सबै काम हेर्छिन।

समय बित्दै जाँदा अरू धेरै जना मदरको सहायतामा आए। ईश्वरको सन्तान मानवको सेवाको लागि गरीबभन्दा गरीब जीवन अंगाल्न तिनीहरू तयार भए।

सन् १९५० सालमा द मिशनरिज अफ् च्यारिटीको स्थापना भएको हो। यसको ठेगाना – मदर हाउस, ५४ ए, लोवर सर्कुलर रोड़, कलकत्ता थियो। जसलाई आजभोलि आचार्य जगदीश बोस रोड भनिन्छ। त्यही ठाउँमा आजसम्म मिशनरिज अफ् च्यारिटीको मुख्यालय छ। जसको हाँगा-बिंगा संसारभरि फैलिन पुगेको छ।

माइकल गोम्सबाट मदर अनि सिस्टरहरूलाई शुरूका प्रायः दुइ वर्षसम्म ठूलो सहायता भएको हो। त्यो समय मदरहरूकोलागि खुबै चुनौती र समस्याको घड़ी थियो। हो – श्रीमान् गोम्सले चाहिएको समय खाना, कुनै सिस्टरलाई माइ रोगले सताउँदा छुट्टै राख्ने कोठा अनि कुनै धार्मिक कामकाजको समय मान्छे बेसी हुँदा चाहिने ठाँउ सबै नै खुशीसाथ दिन्थे। किनभने मदर पहिला त्यहाँ आउँदा पुगीसरी आएको ठाँउ अब सांगुरो भएको थियो।

समय बित्दै गयो। मदरद्वारा शुरू गरिएको सेवा संगठन अर्थात् अडरको कामकुरो बड़ेकोले गर्दा श्रीमान् गोम्सबाट पाएको ठाँउ सानो हुन थाल्यो। उनकोमा अब अरू ठाँउ पनि थिएन। यही समय त्यहाँ एक जना सज्जन आइपुगे। ती सज्जन



भिक्षुणीहरू प्रार्थना सभामा →

दयालु साथै ठूलो मन भएका थिए र जातमा मुसल्मान थिए। यी सज्जन भारत छोड़ी पाकिस्तान बसाइँ जाँदै थिए। उनी पहिला सन्त जेभियर स्कूलका विद्यार्थी पनि थिए। यसैकारण उनले ख्रिस्तान मिशनरिजका गुणहरू बिर्सेका थिएनन्। यसर्थ मदरलाई उनले आफ्नो घर ठीक्कको दाममा बेच्ने विचार पोखे। तर मदरसँग पैसा थिएन। यस्तो अवस्थामा मदरले सधैं गर्दै आएको काम – ईश्वरको याद गरिन्। तब चन्दाको रूपमा प्रशस्त पैसा आयो। जसले गर्दा मदरले त्यो घर किन्न सकिन्।

मदरले शुरू गरेको संस्था वा अडर विस्तारै बलियो हुँदै गयो। यसले जनशक्ति पनि पाउन थाल्यो। सिस्टरहरू कड़ा परिश्रम गर्न लागे। जुन काम आज पनि गर्छन्। तिनीहरूका निम्ति कुनै काम तल्लो दर्जाको र गर्न नहुने छैन। तिनीहरू प्रेमका साथ रोगीका घाउ-खटेरा सफ़ा गर्छन्, भेटाइएका गरीब र मैला मानिसलाई मायासहित नुहाई-धुवाई गरिदिन्छन्। यी काम तिनीहरूका निम्ति यीशूको सेवा गर्नु हो। यसैकारण संसारका सबैभन्दा दुःखी र गरीबलाई यहाँ स्पर्श गरिन्छ अनि उनीहरूको अन्तरआत्मालाई नयाँ रूप दिइन्छ। तिनीहरूका ती घरहरू जसलाई संसारमा सबैभन्दा अँध्यारो र निराशाले भरिएको भन्न सकिन्छ त्यस्ता घर सिस्टरहरूका त्याग,





गरीबको निम्ति स्वास्थ्य एवं सफाई सेवा



बलिदान, सेवा र प्रेमको कारणले आशा र आनन्दले उज्यालो हुन्छन् ।

सिस्टरहरूले कड़ा नियम-कानून पालन गर्नुपर्ने हुन्छ। कलकत्तामा तिनीहरूले दिनभरि गर्नुपर्ने कामको तालिका बिहान ४.३० बजे देखि शुरू हुन्छ। यो समय कलकत्ता महानगरी मस्त निन्द्रामै हुन्छ। शुरूका दुइ घण्टा प्रार्थना, ध्यान र गिर्जामा गरिने पूजापाठमा लगाइन्छ। त्यसपछिं साधारण चिया-चमेना गरेपछि खटाइएका कामकुरो गर्न सिस्टरहरू एक वा दुइ जनाको दलमा बाहिर निस्कन्छन् । तब नगर जागी उठ्छ। सिस्टरहरू भोका-नांगा, असहाय र एकलो मानिस खोज्दै नगरका सड़क र गल्ली गल्ली धुम्छन्। तिनीहरू मैला ढवाँगहरू पनि छान्छन् । किनभने यस्ता ठाउँहरूमा कहिलेकाहिँ भर्खरै जन्मिएका नानीहरू छोड़िएका हुन्छन् । मदरको संगठनकोलागि जीवन पवित्र हुनाले संसारले त्यागेका प्राणीलाई उनीहरू आफ्नो बनाउँछन्। मदरले सिस्टरहरूलाई भनेकी छन्–'म तिमीहरूबाट दयामाया बिनाको चमत्कारपूर्ण काम भएको भन्दा, दया र माया गर्दा भूल भएको काम मन पराउँछु।'

यी सिस्टरहरूका आफ्नो भन्ने जिनिस केही छैनन्। जस्तो मदरको छ, त्यस्तै तिनीहरूको–एक जोड़ा साड़ी, प्रार्थनाको पुस्तक र क्रुस। तिनीहरू आफ्नोलागि साथीभाइ, शाखा-सन्तानबाट केही थाप्दैनन्। अलिकति खानेकुरासम्म सबैको हुन्छ। आफ्ना लुगाफाटा

आफै धुन्छन् अनि अन्य सबै काम पनि स्वयं गर्छन्। धेरै होम अथवा सेवा-केन्द्रहरूको लिपघस पनि सिस्टरहरू नै गर्छन्।

एकपल्ट कसैले मदरलाई लुगा धुने मशिन चढ़ाउने इच्छा गर्‍यो। मदरले सरसल्लाह गरी यो उपहार नम्रतापूर्वक लिन मानिनन्। उनीहरूले केवल बाल्टी, साबुन र पानी मात्र लिन्न स्वीकार गरे। याद रहोस्-अतिथि बैठकमा बाहेक मदरको घरमा कतै पनि पंखा छैन। मदरको कथन छ–'आफ्नो अनि सिस्टरहरूकोलागि ईश्वरको मीठो हावा प्रशस्त छ।' यति हुँदाहुँदै पति मदर व्यावहारिक छन् अनि आधुनिक तकनीकिलाई त्यसैकोलागि भनेर त्यसै लत्याँउदिनन्। उनले नवजात शिशुको प्राण बचाउन सहज हुन्छ भन्ने संझी नानीहरूलाई न्यानो राख्न सकिने दानमा आएको इनक्युबेटर मशिन खुशीसाथ स्वीकार गरिन्।



## पीड़ितहरूको आश्रय

कलकत्ताका गल्ली, सड़क र झुग्गी-झोपड़ीवाला इलाकामा बेवारिस लड़िरहेका घरबारहीन, बेसहारा मानिसको दुर्दशा देख्दा मदर टेरेजाका स्नेहपूर्ण आँखाहरू पीड़ा र चिन्ताले भरिन्थे। त्यस्ता मानिसलाई उनी त्यसै छोड़ेर जान सक्तिन थिइन्। बिमारी भेटेमा उनी धूलैमा घुँड़ा टेकी बस्थिन अनि दवाई-पानी दिने गर्थिन। यसका साथै तिनीहरूलाई सान्त्वनाका केही प्रेमपूर्ण शब्द पनि भन्ने गर्थिन्।

एक दिन पानी परिरहेको बेला मदरले सड़कमा एउटो आईमाई देखिन्, जो जीवनको अन्तिम घड़ीमा थिई। मदरले त्यस आईमाईलाई उठाएर छेवैको घरको वरण्डामा राखिन्। त्यसको प्राण त्यहीं मदरका हातमा गयो। तर एउटा मुस्कान लिएर त्यसको मृत्यु भयो। त्यही घटनादेखि मदरले यस्ता मानिसको हेरचाहका निम्ति एउटा केन्द्र खोल्ने दृढ़ निश्चय गरिन्। जसमा तिनीहरूको सारा जिन्दगी दुःखकष्ट र कुनै माया-प्रेमबिना बितेको भए तापति जीवनको अन्तिम क्षणमा जानवर जस्तो कसैका साथ, सान्त्वना र कुनै माया-प्रेमबिना संसार त्याग्नु नपरोस्।

यस्ता बेसहारा मानिसको लागि केन्द्र खोल्ने मदरको इच्छा पूरा भयो। यस प्रकारको कामकोलागि एक जना दयालु डाक्टरले आफ्नो दवाईखानाको वरण्डा चलाउन दिए। तब फेरि कसैले टेबल ता कसैले चौकी दिए। कतिले चुपचाप दवाई-पानी पठाइदिए।

कलकत्ता जस्तो महानगरीमा हुने समस्यालाई हेर्दा यति गरिनु निश्चय नै समस्या समाधानको स्थायी उत्तर हुन सक्तैन। यस्तो अवस्थामा निराशा हात लाग्दा फेरि कतै न कतैबाट त्यहाँ सहयोग भयो। कलकत्ताको काली मन्दिर विश्व प्रसिद्ध छ। यहाँ हजारौ मानिस पूजापाठ गर्न र बलि चढ़ाउन आँउछन्। यसका साथै धेरै मानिस प्राण त्याग्न पनि यहाँ आउँछन्। यही कारणले गर्दा मदर टेरेजाले काली मन्दिर इलाकामा भएको एउटा यात्री घर स्वीकार गरिन्। जुन घर कलकत्ता नगर निगमले यात्रीहरूको सुविधाकोलागि बनाएको थियो र मदरलाई दिने वचन दिएको थियो। तर त्यस ठाउँ कति वर्षदेखि असामाजिक तत्वहरूको अखड़ा भएको कसैलाई मनपरेको थिएन। यसकारण नगर निगमले त्यस स्थानवाट ती असामाजिक तत्वहरूलाई हटाएपछि मदरलाई त्यो ठाउँ लिनु भनिएको थियो।

यस प्रकार मदरले मृत्युको मुखमै परिसकेका बेसहारा मानिसकोलागि स्थान प्राप्त गरेपछि उनको तेस्रो शत्रु बेसहारा अथवा सहाराहीनताको विरूद्ध युद्ध शुरू भएको थियो। मदरले त्यस ठाउँको नाम निर्मल हृदय अर्थात् चोखो मन राखिन्। यहाँ संसारले हेला गरेको जीवनको अन्तिम खुड़किलोमा पुगेका मानिसलाई मदर र उनका सिस्टरहरू सहायता र सान्त्वना दिने गर्छन्। यहाँ उनीहरूले आफ्नो जीवनकालमा नपाएका प्यार र सेवासुसार मृत्युको समय पाउँछन्। तिनीहरूको अन्तिम इच्छा प्रायः साधारण हुन्छन्; जस्तै-हिन्दू भएमा एक थोपा गंगाजल, ख्रिस्तान वा मुसलमान भएमा अन्तिम प्रार्थना। कोही बेला तिनीहरू केवल एक खिली सिगरेट माग्छन् ता कोही बेला केवल एक थाल भात। सिस्टरहरू मर्न लागेका यस्ता मानिसको अन्तिम इच्छा पुरा गरिदने भरपुर कोशिश गर्छन्। यसभन्दा बड़ी संसारमा तिनीहरूको आवश्यकता रहेको अनि तिनीहरूले माया र प्रेम पाएको अनुभव गराउने प्रयास गर्छन्। तिनीहरू साँच्चै आफूले माया र प्रेम पाएको कुरा जानेर प्राण त्याग गर्छन्।

यी सब कामकुरो विषय शुरू शुरूमा कति मानिसले शंका गरे। एक जना

खिस्तान मिशनरिजले हिन्दू मन्दिरको अघाड़ि यस्तो काम गरेको तिनीहरूलाई मन परेन। तिनीहरूले सम्झे मृत्युको मुखमा पुगिसकेका मानिसलाई खिस्तान बनाइँदैछ। किनभने त्यस्ता मानिसले आफ्नो गरीबीको कारणले नाइनास्ती गर्न सक्तैनन् भन्ने संझिए। यो कुरा पुलिसमा रिपोर्ट भयो।

जब पुलिस अधिक्षक जाँचबुझ गर्न त्यस घरमा गए तब उनले त्यहाँ एक जना नन्ले घावैघाव भएको एउटा रोगीलाई खूबै प्रेमसंग स्याहार-सुसार गरिरहेको देखे। यस दृश्यले अधिक्षकको हृदय छोयो। उनले उज्चर गर्नेहरूलाई भने-'यदि तिमीहरूको इच्छा भए म यस नन्लाई यो ठाउँ छोड्न लगाउँछु। तर एउटा शर्तमा। त्यो हो-यो नन्ले गरेको काम तिम्रा आमा अनि दिदी-बैनी आएर गरून्।'

मानिसले आफ्नो भूल थाहा पाए अनि धेरैले मदरलाई सहायता दिन थाले। साँच्चै मृत्युको मुखमा पुगिसकेका सहाराहीनहरूलाई प्रेम र सेवा गर्ने उद्‌देश्यको यस्तो स्थानले संसारभरिका युवा-युवतीलाई प्रभाव पारेको छ। यसैकारण तिनीहरू छुट्‌टीको समय स्वयंसेवी काम गर्न यहाँ आउने गर्छन्। हो-तिनीहरूलाई बंगला अथवा हिन्दी भाषाको ज्ञान नहोला तर माया, प्रेम र सेवाको भाषा सर्वव्यापक हुन्छ।

सड़क र गल्लीतिर लड़िरहेको मर्न आँटिका बेसहाराहरूलाई नन्हरूले, कति मानिस र कोही बेला पुलिसले उठाउँछन्। यस्ता मानिसलाई अस्पतालमा भर्ना गरिन्दैन। किनभने अस्पतालमा बेसी भीड़ हुन्छ, अर्को कुरा बाँच्ने आशै नभएको यस्ता गरीबकोलागि एउटा मूल्यवान खाट खर्च गर्न सकिन्दैन। तर निर्मल हृदयमा तिनीहरूको स्वागत हुन्छ। जहाँ तिनीहरूलाई खाना दिइन्छ, नुहाई दिइन्छ अनि प्राण जादाँ पनि तिनीहरूको छेउमा एक जना कोही साथी हुन्छ।

एकपल्ट एक जना पत्रकारले मदरलाई यस्ता मानिसकोलागि किन यतिविघ्न दु:ख गर्नु भएको भन्ने प्रश्न गर्दा मदरले भनिन् – म मृत्युलाई रोक्न ता सक्तिनँ तर प्राण जानै लागेको यस्तो मानिसले आफूलाई कसैले याद गर्छ भन्ने कुरा महशुश गराउन सक्छु।"

काली मन्दिरका पुजारीहरूले सम्म मदरलाई मानेका अनि उनको कार्यलाई स्वागत जनाएको कथै छ। तिनीहरूको मन सबैभन्दा अन्तमा जित्न सकिएको कथा सत्य हो। यसकोलागि उनीहरूलाई दोष दिन सकिँदैन। किनभने कुनै विदेशी वा नयाँ धर्म आफ्नो इलाकामा पस्दैछ भने यस विषय खुशी नहुनु साधारण कुरा हो।



मृतप्रायः बेसहाराहरूको हेर्चाह (आउँदो पृष्ठ)

यसैकारण मदरलाई त्यहाँबाट हटाउन र काम गर्नबाट रोक लगाउन काली मन्दिरका पुजारीहरूले पूरा-पूरा कोशिश गरे।

यस्तै बेला एक दिन एक जना पुजारीलाई हैजाले भेटायो। यो बिमार सरूवा हुनाले उसले मन्दिर छोड्नु पर्‍यो। कुनै अस्पतालमा भर्ना पनि दिएन। यसो हुँदा त्यो पुजारी बिजोक भएर सड़कमा लड्यो। तब मदरका सहयोगीहरूले उसलाई निर्मल हृदय पुराए। त्यहाँ उनको सेवा-सुसार भयो र पुजारी जाति पनि भए। जब मन्दिरका पुजारीहरूले यी सब देखे तब ईश्वरको सेवा गर्ने साँच्ची नै त्यहाँ कोही रहेछ भन्ने कुरा तिनीहरूलाई थाहा भयो। त्यसपछि तिनीहरूको व्यवहारमा परिवर्तन आयो। तिनीहरू मदर टेरेजाका परम् मित्र अनि प्रशसंक भए।

निर्मल हृदयबाट कसैलाई कहिल्यै पनि फर्काइँदैन। सबैलाई ईश्वरको सन्तानको रूपमा हेरिन्छ। एकपल्ट एक जना अतिथिले सिस्टर लूकाकाई 'यतिविघ्न मानिसको लागि कसरी पलंग पुर्‍याउँनु-हुन्छ ?' भनी सोद्धा सिस्टरले भनिन्–'यो तिनीहरूको घर हो। आफ्नो घरमा पलंग खोज्ने प्रश्न कहाँ हुन्छ ?'

निर्मल हृदयमा केवल दुइ-कोठा छन्। एउटा स्त्री र अर्को पुरुषकोलागि। जहाँ प्रायः तीन सय मानिस अटाउन सक्छ। राती दुवै कोठाको वार-पार दुइवटा लामो डोरी तानिन्छन् र त्यहाँ मच्छरदानी बाँधिन्छ। यो कोठा एकदमै सफा छ।

निर्मल हृदयमा सबै मानिस प्राण त्याग्नु मात्र आउँदैनन्। काली मन्दिरका पुजारी जस्तो कति जना जाति पनि हुन्छन्। यहाँ फलफूल बेच्ने एक जना घरहीन केटाको कथा यस्तो छ। चोटको कारणले गर्दा त्यस केटाको खुट्टा कुहिन थाल्यो। त्यो अस्पताल गयो तर कतै पनि भर्ना पाएन। यसो हुँदा त्यो कालीघाट नजिकैको सड़कमा बिजोक भएर लड्यो। तर त्यसलाई सिस्टरहरूले निर्मल हृदय लगे। खुट्टा कुहिसकेको हुनाले काट्नुपर्‍यो। यति भएपछि त्यसलाई बनावटी खुट्टा दिइयो। जसले गर्दा त्यो फेरि हिड्न र काम गर्न सक्ने भयो। यसप्रकार त्यसले एउटा नयाँ खुट्टा मात्र होइन· तर नयाँ जीवन पनि पायो।

## एउटा नयाँ विश्वास र जीवन

कुनै घरबारविहीन सड़क र गल्लीमा मर्न लागेका सहाराहीन मानिसको सेवाको लागि जस्तै टुहुरा-टुहुरी, गरीब र फालिएका/शिशुहरूलाई पुर्‍याएका माया-प्रेम र सेवाका निम्ति मदर टेरेजा चिनिन्छन्। यस्ता अभागी शिशुहरूका निम्ति तयार धेरै घरहरूमध्ये पहिलो घर मदरको घरदेखि अलिकति टाड़ो आचार्य जगदीश बोस रोडमा छ। जसको नाम निर्मला शिशु भवन हो। त्यस घरमा पुग्दा सिंढ़ीमाथि एउटा रंगीन पोस्टर देखिन्छ–'यी गरीबहरू तपाईंको प्रेम चाहन्छन् सेवा मात्र होइन।' माया र प्रेमको अर्थ केही पैसा र स्वादिलो खाना दिनुभन्दा अरू केही हो। माया र प्रेम दिनु तपाईंले आफ्नै एउटा अंग दिनुपर्छ। मदरले त्यहाँ दान – धन दिन आउने महानुभावहरू – सित त्यस कुराको माग राख्छिन्। धन-सम्पत्ति वा आर्थिक सहायता आवश्यक कुरा हुन्। तर जसले सेवा गर्न चाहन्छ उबाट त्यसभन्दा बढ़ी कुराको आशा राखिन्छ।

शिशु भवनहरूमा नर्सहरूले अस्पतालमा जन्मी छाड़िएका नवजात शिशुहरू लिएर आउँछन्। यस्ता कतिपय नानीहरू मदरको घर अथवा निर्मला शिशु भवन अघाड़ि

छोड्न्छिन्। कतिले त मरोस् संझी फोहोर-मैला फ्याँकिने मैला ढवाँगहरूमा फालिदिन्छन्। यस्ता शिशुहरू पनि उठाइन्छ। यस प्रकार भर्खरै जन्मेका अथवा केही ठूला यस्ता नानीहरूले त्यहाँ खाना-पिना, दवाई-पानी, लुगाफाटा र वास सबै पाउँछन्। यी सबभन्दा बढ़ी त्यहाँ तिनीहरूको माया र प्रेमपूर्ण हेरचाह पाउँछ र एउटा असल नागरिक बन्न यस प्रकार तिनीहरू त्यहाँ हुर्कन्छन्।

मान्छे बनिन्छ वा असल नागरिक हुन्छ भनी कल्पना नै नगरिएका केही ठूला उमेरका केटा-केटी-समेतलाई आफ्नो प्रयोजनको अनुभव गराई ठीक बाटोमा ल्याइएको छ। यहाँ यस्तै एकजना केटाको कथा छ, जसलाई सन् १९६८ सालमा पुलिस अधिक्षकले मदरका हातमा सुम्पेका थिए।

त्यो केटाले वास्तवमा चोरी गर्थ्यो। त्यो जेलगएको थियो, कुटाई खाएको थियो। रिफर्म स्कूलमा पनि त्यसलाई पठाइएको थियो। यति हुँदाहुँदै पनि त्यसको चोर्ने बानी गएको थिएन। त्यो त्यहाँ छोटो समयमा नै सुध्रियो। त्यो इमान्दार र आफ्नो जिम्मेवारी बुझ्ने अनि अरूलाई पनि सहायता गर्ने भयो।

निर्मला शिशु भवनमा केही वर्षभित्रमा दस हजार बालक-बालिकालाई हुर्काइएको छ। जहाँ तिनीहरूलाई स्याहार-सुसार गरिन्छ, हुर्काइन्छ, बड़ाइन्छ, पढ़ाइन्छ अनि आफ्नो जीविकाकोलागि तालीम दिइन्छ। ठूलो भएपछि आफ्तो घर बसाउन सहायता दिइन्छ। निर्मला शिशु भवनमा बड़ेका, पढ़ेका र तालीम पाएका धेरै युवतीहरूको विहे राम्रा राम्रा परिवारमा भएको छ। यस कामकोलागि तिनीहरू मदरबाट सहयोग पाउँछन्। मदरहोममा भएका युवतीहरू सबै कुरामा सिपालु हुनेहुनाले, धेरै मानिस त्यहाँका युवतीलाई आफ्नी बुहारी बनाउन रूचाउँछन्।

सत्य हो-यस्ता कामहरू माया र प्रेमले मात्र गर्न सकिने होइन। यसकोलागि रूपियाँ-पैसाको खाँचो पर्छ। मदरले यस्तो धन संसारका विभिन्न ठाउँहरूबाट पाउँछिन्। आज मदर नामी भएकी छन्। यसैकारण उनलाई पृथ्वीका चारै कुनाबाट सहायता आउँछ। तर जुन समय मदरको नाम चलेको थिएन, त्यस समय पनि उनले आफूसँग भएका ती अभागी बेसहाराहरूलाई खुवाउँथिन् अनि जो जति आउँछ, पाउँछ सबैलाई स्वागत गर्थिन्। वास्तवमा मदरका दृढ़ र गहिरो विश्वासले उनलाई आफ्नो कमजोर काँधमा ती बेसहाराहरूको सेवा गर्ने शक्ति दिएको छ। मदरको ईश्वरमाथि विश्वास छ। ईश्वरले उनलाई कहिल्यै धोका दिएका छैनन्।

केही वर्षअघि मदरले आग्रामा एउटा चिल्ड्रेन्स् होम बनाउने काम थालिन्। तर उनकोमा चाहिएको पैसा भने थिएन। काम हुँदैथ्यो। यसैबीचमा अचानक पचास हजार रूपियाँ चाहियो। पैसा छैन, अब कहाँबाट ल्याउने ? काम बन्द गर्नुपर्ने रहेछ भन्ने भयो। यस्तै समय मदरलाई मेगासेसे पुरस्कार दिइएको खबर आयो। जुन पुरस्कारमा अन्य कुराबाहेक पचास हजार रूपियाँ पनि दिइन्छ। यो खबर पाएर मदरले भनिन्– 'ईश्वरले यो घर बनोस् नै भन्छन्।'

एकपल्ट फेरि अचानक ठण्डा बड्यो। शिशु भवनमा नानीहरूकोलागि भनेजस्तो कम्बल थिएन। सिरक बनाउन रूवा पनि थिएन। यस अवस्थामा मदरले आफ्नै ताता लुगाहरू नानीहरूलाई दिन आँटिकी थिइन्। यति नै बेला कसैले दैलोको घण्टी बजायो। त्यहाँ एक जना मानिस आएका थिए। उनी आफू विदेश जानपर्ने भएको हुनाले उनी आफ्ना नयाँ कम्बल र सिरकहरू शिशु भवनलाई दिन चाहन्थे।

मदर होममा यस्ता साना चमत्कार भइरहन्छ। एकपल्ट होममा चामल कम्ति भयो। नानीहरूलाई अब के खुवाउने ? सबै छक्क परिरहेको समय एक जना स्त्रीले त्यहाँ एक बस्ता अन्न ल्याइदिइन्।

यस्तै प्रकारले एकपल्ट मदर-होममा धेरै दुःख थियो। यतिसम्म कि नानीहरूले सधैं जस्तो क्रिसमस पार्टी, मीठा मीठा खाना र उपहार पाउन नसक्ने जस्तो भयो। धेरै दिनदेखि त्यही समयलाई पर्खिबसेका नानीहरूलाई यस्तो हुनु सिस्टरहरूकोलागि साह्रै दुःखको कुरा भएको थियो। तर त्यहाँ एउटा नचिताएको कुरा भयो। होममा एक जना मानिस आएर एउटा लिफा दिए। उनले भने–'यहाँ भएको पैसा मदरको इच्छानुसार जस्तै पनि काममा लगाउनसक्नु हुन्छ तर त्यो काम नानीहरूको लागि होस्।' त्यस लिफाभित्र सय सयका दसवटा नोट थिए। नानीहरूको क्रिसमस पार्टी अरू कति वर्षको भन्दा त्यस वर्ष बड़ो धूमधामसँग भयो।

तर सधैं भने जस्तो हुँदैन। दानीहरू दान दिन सधैं मदर होमको त्यो प्रसिद्ध घण्टी बजाउन आउँदैनन्। यस्तो अवस्थामा मदर चाहिएको धन बटुल्न आफै वाहिर जान्छिन्।

प्रसिद्ध पत्रकार एवं लेखक श्री खुशवन्त सिंह एकपल्ट मदरसँग भेट गर्न गएछन्। त्यस वेला मदरले उनलाई भनेकी एउटा घटना यस्तो छ–एउटा बिस्कुट कारखानाबाट भाँचिएका सबै बिस्कुट मदर होममा पठाइन्थ्यो। तर त्यस वर्ष आर्थिक कठिनाइले

गर्दा कारखानालाई त्यो दान बन्द गर्न कर लाग्यो। यस अवस्थामा मदर स्वयं कारखानाको युवा मालिकसँग भेट गर्न गइन्। मालिकले उत्पादन मूल्य बड़ेको–कारणले टुक्रिएका बिस्कुट पनि बेच्नपरेको कुरा मदरलाई बताए। यस अवस्थामा मदरले कुनै तर्क राखिनन्। तर बिस्कुट नानीहरूले खूबै मनपराएको कुरा दुःखसाथ भनिन्। यसका साथै ती नानीहरू जीवनमा धेरै कुरादेखि भोको रहेका चर्चा गर्दै तिनीहरूको निराशाको चित्रण गरिन्। यस्ता कुरा सुनेर मालिकका आँखा आसुँले भरिए। उनले भाँचिएका बिस्कुटको सबै थाक मदरको भ्यानमा लगाउने आदेश दिए।

मदरलाई सायद सबै कुराको कमी हुनसक्छ तर उनलाई कहिल्यै पनि आशाको कमी हुँदैन। यस्तो कुरा पहिल्यैदेखि हुँदै आइरहेछ। उनलाई चाहिएका कुरा ईश्वरले दिन्छन्।

जब मदरलाई स्यालदाह स्टेसन नजिकै एउटा गोदाम दिइयो उनले त्यसलाई बेसहारा, घरहीन प्रौढ़हरूकोलागि सुत्ने ठाउँ बनाइन्। यस ठाउँमा दिउँसो नानीहरूलाई पढ़ाइन्छ। यसका साथै तिनीहरूलाई कारीगरीको काममा पनि सहायता दिइन्छ। जसले गर्दा तिनीहरू भविष्यमा आफ्नै खुट्टामा उभिन सक्छन्। राती त्यो ठाउँ घर नहुनेहरूकोलागि सुत्ने ठाउँ हुन्छ।

यो ठाउँ शुरू गरिएको राती, त्यो कोठामा लगाइएको फलाममा कसैले लतपत गर्दै लेखेको थियो–'प्रेम नै ईश्वर हो।' साँच्चै, यही एउटै कुरा मात्र मदरको सिद्धान्त हुन सक्छ। मदरका धार्मिक बखान वा उपदेशमा होइन तर सेवामा विश्वास छ। जो ईश्वरप्रतिको भक्तिको खाश नमूना हो।

मदर होममा प्रतिदिन लेखिइने प्रार्थनाहरूमध्ये एउटा प्रार्थना यस्तो छ–

मौनताको फल प्रार्थना हो
प्रार्थनाको फल विश्वास हो
विश्वासको फल प्रेम हो
प्रेमको फल सेवा हो।



निर्मल शिशु भवनको प्रसन्न नानीहरू →

विश्वासले सबै कुरा संभव बनाउँछ। मदर भर्खरै अमेरिका गएकी थिइन्। त्यस समय एक जनाले मदरलाई धन राशि बड़ा उनका निम्ति बीमा आदिबाट हुने नाफाहरूको फायदा उठाउने सल्लाह दिए। मदरले यो कुरा मानिनन्। उनले पाइरहेको दानमाथिनै भर पर्ने कुरा बताइन। उनले आफ्नो अमेरिकी शुभचिन्तकलाई भनिन्–'ईश्वरले, चाहेका कुरा सधैं दिएका छन्। के तपाईंलाई उनी अमेरिकामा एक्कासि दिवाला हुन्छ जस्तो लाग्छ ?'



## केही पनि अपवित्र (छूत) छैन

कोढ़लाई अझ पनि डरलाग्दो रोग मानिन्छ र यो रोग लागेका मानिसलाई समाजले परपरै गर्छ। पहिला पहिला कोढ़ीहरूलाई गाउँ बाहिर गरिन्थ्यो। कोही कोढ़ी गाउँमा आउन पर्दा सावधानीको घण्टी बजाउँदै कराउनुपर्थ्यो–'छूत, छूत।' तर आजकल विज्ञानको खोजीले गर्दा यस रोगलाई जाती पार्ने मेलोमेसो भइसकेको छ। यसका साथै भने जस्तो सावधानी गरिए यो रोग सर्दैन पनि। यति हुँदाहुँदै पनि कोढ़ीहरूप्रति गरिने व्यवहारमा भने खाश हेरफेर आएको छैन। आज पनि कोढ़ीहरूलाई आफ्नै परिवारले पर गर्छ, घृणा गर्छ। यिनीहरू समाजमा छूत बनेका छन्। तर मदर टेरेजा अनि उनका मिशनरिज अफ् च्यारिटीले, समाजले त्यागेको असहाय कोढ़ीहरूलाई पनि हेर्छन् अनि आफ्नै हातले ती रोगीका घाउ-खटिरा धुइदिन्छन्। मलमपट्टी र दवाई-पानी दिने गर्छन्।

मदरका एक जना जीवनीकार डेशमण्ड डोइगको वर्णन अनुसार, यस्तो डरलाग्दो रोगसित मदर पहिलोपल्ट कसरी परिचित भइन् भन्ने कुरा थाहा लाग्छ–एकपल्ट मदर झुग्गी-झोपड़ीवाला इलाकामा बिमारीहरू हेर्दै थिइन्। यस्तैमा एक जना बिमारीले

आफ्ना हात देखायो जसको बूढ़ी औंली कुहेको थियो। मदरलाई त्यो औंली नकाटी हुँदैन भन्ने कुरा थाहा भयो। काट्ने सरजाममा उनीसित एउटा कैंची मात्र थियो। मन बलियो गरी मदरले औंली काटिदिइन्।

यस्ता कामका निम्ति सिस्टरहरू आजकल बड़ी तालिम प्राप्त छन्। धेरै कोढ़ केन्द्रहरू खोलिएका छन्। धन पनि जम्मा गरिएको छ। कलकत्ता छेवैको एउटा कोढ़ केन्द्रको नाम प्रेमदान अर्थात् प्रेमको उपहार राखिएको छ। यहाँ कोढ़ीहरू सामान्य जीवन बिताउँछन्। यहाँको वातावरण शान्त छ। यहाँ तिनीहरूलाई समाजमा काम लाग्ने मानिसको स्थानमा पुर्‍याइएको छ।

मदरले कलकत्तादेखि केही बाहिर टीटागड़मा पनि एउटा यस्तै केन्द्र खोलेकी छन्। जसको नाम प्रेम निवास अर्थात् प्रेमको घर राखिएको छ। यहाँ कोढ़बाट जाति भएका मानिस वस्छन् र जीविका उपार्जन गर्छन। यहाँ तिनीहरू नरिवलको झुत्राबाट डोरी, झोला, गुन्द्री आदि वस्तु तयार गर्छन्। यी चीज तयार गर्नकोलागि कलकत्ताका





कोढ़लागेका रोगीहरूसित मदर टेरेजा



सड़क र गल्लीहरूमा हजारौंको संख्यामा फ्याँकिएका काँचो नरिवलका डल्ला जम्मा गरिन्छ अनि तिनै फालिएका नरिवलबाट झुत्रा निकाली माथि भनिएका चीजहरू तयार हुन्छन्।

यसो गर्दा त्यहाँ दुइवटा काम भएको देखिन्छ–सड़क र गल्लीहरूको सफाई अनि कुनै समय कुनै काम गर्न सक्तैनन् भनिने मानिसहरूलाई आफ्नै खुट्टामा उभिने अवसर। यस विषय मदरको भनाइ–'सुनमा परिणत हुने कुड़ा-कचौरा अथवा कुड़ा-कचौरालाई सुनमा परिणत गरिनु।"

उदाहरणकोलागि यहाँ निवारणलाई लिउँ। त्यो पेशाले नै भिकारी थियो। त्यसले कोढ़ीको रूप बनाएर कालीघाट इलाकामा भीक माग्ने गर्थ्यो। तर यसो गर्दा गर्दा त्यसलाई एक दिन साँच्चै आफूलाई कोढ़ले समातेको थाहा भयो। त्यसको होशहवास उड़यो। भाग्यवश त्यसलाई प्रेमदानमा लगियो अनि ठीक दवाई-पानी र स्याहार-सुसार पाएर त्यो जाती पनि भयो। त्यस घटनाले निवारणको शरीर मात्र होइन आत्मा पनि बद्लियो। त्यसलाई आफू सम्पूर्ण एक्लो छू भन्ने लागेको कुरा साँचो होइन रहेछ भन्ने सत्य थाहा भयो। त्यसले प्रेमदानमा माया र प्रेम गर्ने मानिस

पायो। यसोहुँदा त्यसले आत्मगौरव पायो। आजकल निवारण भीक माग्ने काम गर्दैन। त्यो शान्ति नगरको एउटा दवाईखानामा काम गर्छ। निवारण त्यस कलोनीको एक जना परिश्रमी, इमानदार, हँसिलो र नम्र सदस्य बनेको छ।

एकपल्ट बंगाली लेखक सुदेव राय चौधरी एउटा कोढ़ केन्द्रको सिलसिलामा मदरसंग सोदीपुर गए। त्यहाँ तिनले एक जना अधवैंशे व्यक्तिकी छोरीलाई मदरले जाती पारिदिएकी हुनाले छोरीको बिहेको बन्दवस्त भएको तर दाइजोमा दिनुपर्ने कतिपय चीजवीज र सुनको औंठी दिन नसक्ने कुरा त्यस व्यक्तिले मदरलाई भन्दै गरेको सुने। यी कुरा सुनेपछि मदरले तत्कालै एउटी सिस्टरलाई भनिन्–'त्यो बाकस हेर, त्यहाँ एउटा सुनको औंठी हुनुपर्छ।' साँच्चै बाकसमा सुनको एउटा औंठी थियो। यसका साथै अन्य चीजवीजको पनि बन्दवस्त भयो। यस प्रकार त्यस केटीको बिहे भयो।

आज मिशनरिज अफ् च्यारिटीको देखरेखमा ११०० कोढ़ केन्द्र छन्। जसमा प्रायः १८३,००० कोढ़ी छन्। मदरले अन्तर्राष्ट्रीय पुरस्कारहरूबाट प्राप्त सवै धन तिनै गरीब, पीड़ित र बेसहाराहरूको सेवामा खर्च गर्छिन्। आज मदरका कार्यक्षेत्र र सेवाको वाणी चारैतिर पुगेको हुनाले पैसा एकत्र भएको छ। जसलाई मदर अनि उनका सिस्टर्स अफ् च्यारिटीले खाँचोमा रहेकाहरूका निम्ति खर्च गर्छन्। कुनै पनि सहायता र उपहार जो जति नै किन साधारण नहोस्, कहिल्यै पनि अस्वीकार गरिंदैन।

सन् १९६४ सालमा पोप पल-छैटौं भारत आएका समय अमेरिकाको मोटरगाड़ी कम्पनी फोर्डले उनलाई भ्रमणका निम्ति एउटा खूबै शानदार LIMOUSINE गाड़ी दियो। जाने बेलामा पोपले मदरको 'विश्वव्यापी प्रेमको अभियानका सानो हिस्सा' भन्ने विचारसहित त्यो गाड़ी मदरलाई दिए। तर जीवनमा गरीबभन्दा गरीव भएर बस्छु भन्ने सिद्धान्तकी मदरका निम्ति त्यो शानदार गाड़ी अर्थ न बर्थ कै थियो। मदरले तर पनि गाड़ी बिक्री गरिनन्। त्यसलाई चिट्ठामा उड़ाउने विचार गरिन्। फलस्वरूप गाड़ीको दामको चार गुणा नाफा भयो। बेचेको भए त्यसको दाम रूपियाँ पाँच लाख जस्तो मात्र पाउने थियो। पैसा एउटा कोढ़ केन्द्रकोलागि खर्च गरियो। यसका साथै सन् १९७१ सालमा मदरले पोप जोन तेईस औं शान्ति पुरस्कार[1] मा प्राप्त २१,५०० डलर पनि कोढ़ीहरूको सेवामा खर्च गरियो।

## आँधी-बेहूरीबाट बचाउ

मदरले कसरी आफ्नो माया-ममताको अंगालोले सबैलाई बाँधेकी छन्-यो कुरा हामीलाई थाहा भयो। मदरको स्नेहपूर्ण यस्तो आलिंगन बिमारी, रोगी, मर्नै आँटेको मानिस सबैले पाएका छन्। मात्र यति होइन उनको यस्तो माया र ममताले भरिएको तातो अंगालो अरू फैलिएर गएको छ। दमदम हवाई अड्डा नजिकै जेसोर रोडमा खड़ा छ–निर्मला केनेडी होम। यो ठाउँ वास्तवमा सन् १९७१ सालमा बंगला देशले पाकिस्तानबाट अलग हुने युद्ध गर्दा पूर्व बंगालबाट भागेर आउने हजारौं बंगलादेशी शरणार्थीका निम्ति खड़ा गरिएको शरणार्थी शिविर थियो। यस ठाउँलाई आँप अनि जामुनको बघैंचाले घेरेको छ। जीवन बचाउन भाग्नु पर्‍यो। चारैतिरका लथालिंग र हड़बड़ीमा धेरै जना आफ्नो परिवारसंग छुट्टिए। युद्धका हाहाकार र डरलाग्दा घटनाहरू सामना गनुर्पर्दा धेरै जना मानसिक रूपले कमजोर भए। तिनीहरूले मनको स्वस्थ्यपन हराए। यस्ता शरणार्थीहरूको देखरेख गर्न र माया-प्रेम जनाउन जाने स्वयंसेवी दलहरूमा मदर अनि उनको समर्पित सेवादल प्रथम दल थियो। मदरसँग खानापीना, दवाइ-पानी सबै थिए। तर यी सबभन्दा बड़ी मदरसंग माया र प्रेमले भरिएको अमूल्य

सेवाको भाव थियो।

पाकिस्तान-बंगला देशको उक्त युद्ध सकिएपछि, भारत-बंगला देश सीमानामा भएको त्यस शिविरबाट ती शरणार्थीहरू स्वाधीन बनेको आफ्नो देशतिर फर्के। त्यस शिविर भने मिशनरिज अफ् च्यारिटीलाई दिइयो।

निर्मला केनेडी होम बनाउन मदर टेरेजाले जोसेफ केनेडी जुनियर फाउण्डेसनबाट पाएको ५०,००० डलर खर्च गरिन्। यो होम मस्तिष्कको रोगले गर्दा शरीरको अंग बटारिने रोगी, मन्द बुद्धिवाला अनि मानसिक रूपले बिमार हुनेहरूकोलागि हो। यहाँ उच्च शिक्षा पाएका डाक्टरहरू केही समयकोलागि सेवा गर्न आउने गर्छन्। ती डाक्टरहरूबाट सिस्टरहरूले चाहिने कुरा सिक्छन् अनि डाक्टरहरू फर्केपछि कामलाई चालु राख्छन्। कति जना ससाना बिमारीहरूको अवस्था साह्रै मायालाग्दो भए ताप.ने मदरद्वारा खड़ा गरिएका यस्ता अन्य होमहरूमा रहिआएका शान्ति र सन्तोषजस्तो कुरा यहाँ पनि देखिन्छ। जसको मूल कारण जस्तै अवस्थामा पनि सिस्टरहरू शान्त र प्रसन्न रहनु हो।

मदर होमहरूमा हुने यस्ता काम देखेर अन्य कति ठाउँमा जस्तै यस ठाउँमा पनि धेरै मानिस छक्क पर्छन् र भन्छन्–'कहिल्यै पनि जाती नहुने यस्ता मानिसहरू माथि यस प्रकारका दुःख र खर्च किन गर्नु ? मदर यस्तो विचारलाई स्वीकार गर्दिनन्। भन्छिन–'सबैको जीवन पवित्र छ। सबैजना ईश्वरका सन्तान हुन्। माया र हेरचाह पाउने अधिकार सबैको हुन्छ। मदर ठान्छिन्–कुनै एक जना अभागीलाई उनले दिनसक्ने केही खुशी र सुविस्ता त्यसै खेरो गएको छैन तर ईश्वरसम्म पुर्‍याइएको छ।





एक विकलांग राष्ट्रीय पुरस्कार विजेतासित मदर टेरेजा

## प्रेम अनि मान-सम्मान

मदरले गर्दै आएका सेवा कार्यको सम्मान गर्दै उनलाई धेरै पुरस्कार दिइएका छन्। पुरस्कारबाट प्राप्त धन मदरले तत्कालै अरू सेवा केन्द्र वा होम खोल्नुमा खर्च गर्छिन्। मदर आफूलाई दिइएको यस्ता प्रेम, मान र इज्जत गरीब र बेसहाराहरूले, तिनीहरूप्रति संसारले राख्ने सठीक धारणाको मागको रूप ठान्छिन्।

भारत सरकारले मदरलाई सन् १९६२ सालमा पद्मश्रीले सम्मान गर्‍यो। यो सम्मान पहिलो र समय अनुकूल अवश्यै भयो। यस मेडल आजकल मदर हाउसको गिर्जा घरकी भर्जिन मेरीको मूर्तिमा झुण्डाइएको पाइन्छ। यसै वर्ष मदरले अन्तर्राष्ट्रीय ख्यातिको मेगासेसे पुरस्कार पाइन्। जुन पुरस्कार विशिष्ट समाज सेवाका निम्ति दिइन्छ। जनवरी १९७१ सालमा मदरलाई पोप पल-छैटौंद्वारा पोप जोन-तेइसौं शान्ति पुरस्कार प्राप्त भयो। यो कुरा हामीले अघि नै पढ़ेका छौं। त्यही वर्ष सितम्वर महीनामा अमेरिकाको बोस्टनमा मदरलाई गुड समारिटन (Good Samaritan) पुरस्कार प्राप्त भयो। यसको एक महीनापछि उनले फेरि जोन एफ़ केनेडी अन्तर्राष्ट्रीय पुरस्कार पाइन्।



मदर टेरेजाले भारत रत्न प्राप्त गर्नु हुदैछँ



यस प्रकार अन्य धेरै पुरस्कार पनि मदरलाई दिइन थालियो । यसै सिलसिलामा सन १९७२ सालमा भारत सरकारबाट फेरि उनले अन्तर्राष्ट्रीय सुझबुझका निम्ति जवाहरलाल नेहरू पुरस्कार पाइन् भने सन् १९७३ मा धर्म विस्तारको लागि इंगलेण्डका राजकुमारबाट टेम्पलटन पुरस्कार प्राप्त गरिन् । यसका साथै फेरि सन् १९७४ मा मदरलाई अमेरिकाका मास्टर अफ मेजिस्ट्रा पुरस्कार दिइयो ।

यी सबै पुरस्कारहरू भन्दा सबैभन्दा ठूलो सम्मान थियो नोबल पुरस्कार । यो विश्वविख्यात पुरस्कार मदरले सन् १९७९ मा पाइन् । सन् १९८० मा भारतले भारत रत्न पुरस्कारले सम्मान गर्‍यो । यो पुरस्कार भारतको सबैभन्दा श्रेष्ठ पुरस्कार हो, सम्मान हो ।

मदरद्वारा गरिएका सेवा कार्यलाई स्मरणीय तुल्याउन एउटा विशिष्ट विधि अप्नाइएको छ । त्यो हो–संयुक्त राष्ट्र संघको एउटा एजेन्सी खाद्य अनि कृषि संगठनले भोक नियंत्रण वा भोक हटाउने दिशामा सेवा गर्नेहरूलाई The Ceres Medal दिएर सम्मान दर्शाउने काम गर्छ । यस मेडलको एकापटि खाना नपाएर कमजोर भएको एउटा नानीको नक्सा र त्यसलाई अंगाल्नलागेका हातको नक्शा कुँदिएको छ भने अर्कोपटि मदर टेरेजाको नक्शा कुदिएको छ ।



## संसार अंगाल्नु

कलकत्ताको त्यो अपरिचीत झुग्गी-झोपड़ीवाला इलाकाबाट शुरू भएको मदरका सेवाकार्य आज संसारभरि फैलिएको छ। संसारका हर ठाउँमा गरीब-दुःखी, दीन-हीन र एक्लो मानिस पाइन्छ। यस्ता मानिस संसारका जुन जुन स्थानमा पाइन्छ त्यहीं त्यहीं सेतोमा नीलो किनारा भएको साड़ी लगाउने नन्‌हरू देख्न सकिन्छ। वास्तवमा रोमका गल्ली-बस्तीदेखि लिएर प्रशान्त महासागरको सुदूर टापु पापुवा न्यू गायनासम्म मदरका सिस्टरहरू देख्न सकिन्छ। यस प्रकार मदरको स्नेहयुक्त छाया बिमारी, दीन-हीन बेसहारा, एक्लो मानिस अनि अरूले गरेको युद्धको पीर-मर्का भोगिरहेका सबै सबैमा पुगेको छ।

कलकत्ता स्थित मदर हाउसमा भएको मानचित्र कुनै हवाई सेवाको मुख्यालयमा देखिने मानचित्र जस्तै देखिन्छ। जुन मानचित्रमा कलकत्ताबाट यूरोप, अफ्रिका, एशिया, अष्ट्रेलिया र अमेरिका आदि देशहरूमा मदरद्वारा खोलिएका सेवा केन्द्रहरू देखाइएको हुन्छ। तर यो काम सक्नासाथ, त्यो मानचित्र पुरानो भइहाल्छ। किनभने मदर आपदबिपद परेका ठाउँहरूमा आफ्ना प्रेम र सहयोगको सन्देश लिएर त्यहाँ पुगिसकेकी हुन्छिन्।

यसकारण यहाँ तल देखाइएको तालिका हरदर मात्र हो। यसलाई ठीक्कमा राख्नु एकदमै असंभव छ। किनभने मदरबाट आवश्यकता परेकालाई सहायता हुने कामको साँधी नै रहँदैन। यही कुरा संसारभरि फैलिएको मदरका सेवा केन्द्रहरूसँग पनि लागू हुँदछ। किनभने दया, प्रेम र सेवामा संलग्न मदरको मिशनले काम मात्र गर्छ हिसाब रहँदैन।

**मिशनरिज अफ् च्यारिटीका विभिन्न सूची**

| | | | |
|---|---|---|---|
| १. | सिस्टरहरूको संख्या | – | २,२३३ |
| २. | झुग्गी-झोपड़ी इलाकामा भएको स्कूल | – | ६७ |
| ३. | नानीहरू | – | १३,७७७ |
| ४. | रिलिफ सेन्टर | – | १६० |
| ५. | हप्तामा सुक्खा राशिन पाउने मानिस | – | ८०,०५६ |
| ६. | दिनहुँ खाना पाउने मानिस | – | ४५,५३३ |
| ७. | सिलाइ केन्द्र | – | २०२ |
| | सिलाइ सिक्ने केटीहरू | – | ७,६३७ |
| ८. | टंकन (टाइप) केन्द्र | – | ८ |
| | टंकन सिक्ने केटीहरू | – | २४३ |
| ९. | मोबाइल क्लिनिक | – | ७४५ |
| | हेरिएको बिमारीको संख्या | – | १५,६९,८२१ |
| १०. | कोढ़ केन्द्र | – | ११९ |
| | हेरिएका कोढ़ीहरू | – | १,८२,६४८ |
| ११. | होम फर डाइङ डेस्टीच्युट्स | – | १४५ |
| | बिमारी | – | ३,६८१ |
| १२. | होम फर एवन्डण्ड चिल्ड्रेन | – | १०३ |
| | नानीहरूको संख्या | – | ४,२६० |
| १३. | डे क्रेच वा माल्न्युट्रेसन सेन्टर | – | १०२ |
| | नानीहरू | – | १,५२,२३४ |
| १४. | होम्स फर एलकोहोलिक्स एण्ड एडिक्टस् | – | ६ |
| १५. | अविवाहित आमाहरूकोलागि खोलिएको होम | – | ६ |
| | आमाहरू | – | ९ |
| १६. | नेचरल फेमेली प्लानिङ सेन्टर | – | २२ |
| | केस | – | ३,६३२ |

**सन् १९८७ तिर संशोधित सूची**

## साँचो विनम्रताको महिमा

मदर टेरेजा आफ्नो नीजि विषय ता कुरै नगरौं आफ्ना कामकार्वाइ विषय पनि बातचीत गर्न रूचाउँदिनन्। उनले आफ्ना संस्था अनि आफूले गरेका कार्यहरू विषय कुनै किताब र लेख-रचना लेखेकी छैनन्। एक पल्ट एक जना पत्रकारले मदरलाई यी सब विषय रचना लेख्ने विचार पोखे। जसले गर्दा अरू धेरै मानिसलाई मदरका कामकाज विषय ज्ञान हुनेछ। यसको जवाबमा मदरले भनिन्–'यो काम ता मेरो नभएर तपाइँहरूको हो।'

मदरद्वारा भएका कार्यहरूको प्रचार-प्रसार बिस्तारै आफै नै हुँदै आएको छ। शुरू शुरूमा यसको प्रचार मदरबाट सहायता पाएका अथवा उनका कामकार्वाइ देख्ने मानिसहरूबाट भएको थियो। फलतः दीन-दुःखी मानिसलाई एक जना यस्तो व्यक्तिको विषयमा थाहा भयो जसले कहिल्यै पनि तिनीहरूलाई निराश बनाउँदिनन्। यस्तै प्रकारले खबरकागज अनि पत्र-पत्रिकाले मदरका कामकाज विषय जानकारी दिए अनि संसारलाई मरदजस्तो अर्को व्यक्ति छैन भन्ने कुरा थाहा भयो। सत्य हो–संसारमा नर-नारी धेरै छन्। हजारौंले ईश्वरको खोजीमा संसार त्यागेका छन्।

यस्तै प्रकारले अरू बाँचोस् संझी आफू मर्ने पनि धेरै छन्। तर मदर यी सबभन्दा एकदमै भिन्न छन्। उनले एउटा यस्तो संगठन बनाएकी छन् जसको शतप्रतिशत आधार एक जना दुब्ली र कमजोर देखिने स्त्रीको विश्वासको फल हो। जो दीन-दुःखीको उद्धारकोलागि झण्डै झण्डै संसारको प्रत्येक देशमा पुगिसकेको छ। संसारका दीन-दुःखी र बेसहाराहरू मदरलाई सहायता माग्नु आउनु पर्दैन तर मदर तिनीहरूलाई खोज्दै त्यहाँ पुग्छिन्। यस प्रकारका व्यावहारिक चाल र प्रेमपूर्ण हृदय भएको संगठनकर्ता अघि कहिल्यै देखापरेका थिएनन्। जब जब हामीलाई स्वयंसेवी सेवाको आवश्यकता हुन्छ तब तब मदर अनि उनका सिस्टरहरू सबैभन्दा अघाडि हुन्छन्।

कुनै पनि योजना शुरू गरेपछि जस्तै अड़चन आए तापनि मदरले त्यसलाई बन्द गर्दिनन्। मदरको सफलताको मुख्य कारण उनको मायालु हात वा प्रयत्न भन्न सकिन्छ। मदरमा एउटा अति नै विशिष्ट कुरा छ, त्यो हो–उनका आत्मिक गुणहरू व्यवहारमा परिणत हुँदछ। उनी एकदमै कम्ति बोल्छिन् र उनका कार्यहरू उनको विषयमा बोल्छन्।

मदर अनि उनका सिस्टरहरूले आज प्रशस्त प्रशंसा र इज्जत पाएका छन्। यस्ता धेरै ससाना घटनाहरू छन् जसले मदर अनि उनका सिस्टरहरूले पाएका इज्जत र प्रशंसाको प्रमाण पेश गर्दछ। यहाँ एउटा उदाहरण पेश गरौं–जुन वेला निर्मला केनेडी होम शरणार्थी शिविरकै रूपमा चल्दैथ्यो त्यहाँ हैजा फैलियो। यसै बेला सेनेटर केनेडी शिविर हेर्न आए। बिमारीहरू हेर्दै जाँदा उनले नीलो किनारा भएको साड़ी लगाएको एक जना सिस्टरलाई देखे। जसले पानीकलमा टुक्रुकु बसी हैजाले पीड़ित रोगीहरूको मैला लुगा धुँदै थिइन्। यस्तो दृश्य देख्ता सेनेटर केनेडी खूबै प्रभावित भए। उनी सिस्टर भए ठाउँमा गए अनि खुशीले हात बड़ाए। तर सिस्टरले आफ्नो हात अघि बड़ाइनन्। किनभने हात मैला थियो। तब सेनेटर केनेडीले भन्ने–'तपाईंका हात जति बेसी मैला भयो त्यति नै बेसी मेरो इज्जत बड़छ भन्ने म अनुभव गर्छु।'

## ईश्वर नै प्रेम हो

'कसले तपाइँलाई यस्तो पुण्य कार्य गर्न प्रेरणा दियो ?'

यो प्रश्न मदरलाई लाखौंपल्ट सोधिएको छ अनि जब पनि उक्त प्रश्न उनको अघि राखिन्छ तब उनले सहजै भन्छिन्–'यीशू मसीहा।'

'कुन कुराले तपाइँलाई यस्तो काम अघि बढ़ाउने शक्ति दिन्छ?' फेरि मानिसले प्रश्न गर्दा उनी भन्छिन्–'बाइबल।'

संभव छ–मदरका निम्ति यीशू मसीहा र बाइबल प्रेरणाको स्रोत हुन सक्छन्। तर उनले माया, प्रेम र सहायता पुर्‍याएका मानिस भने सबै धर्मका छन्। विभिन्न धर्म र राष्ट्रियता भएका मानिस उनीकहाँ पुग्छन्। सबै दृष्टिकोणबाट मदर अति साधारण देखिन्छ। तर उनको अन्तर हृदयबाट जुन आत्मिक सुन्दरता फैलिन्छ त्यसबाट कोही पनि प्रभावित नभई रहन सक्तैनन्। उनको प्रार्थना यस्तो छ–'हे ईश्वर, संसारभरिमा गरीबी र भूकमरीमा बाँच्ने अनि मर्ने हाम्रा प्रियजनको सेवाका निम्ति हामीलाई योग्य बनाइदिनु होस्।'

एक जना विदेशी स्वयं सेवकले आफ्नो देशमा यस्तो काम नगरेर मदरकोमा

आई काम गर्न मनपराएको खाश कारण विषय भनेका छन्–'पश्चिमी देशमा भएका ठूल्ठूला संगठनहरूमा नपाइने एउटा कुरा मैले यहाँ पाएँ। त्यो कुरा हो-प्रेमको सगुणता।' मदर अथवा कुनै सिस्टर बिमारी हेर्न कुनै पनि कोठामा पस्दा साना-ठूला सबै बिमारीका आँखा खुशीले बली उठ्छन्। मदर प्रत्येक पलगंमा जान्छिन्, बिमारीका झिना हात-पाउ अनि लथालिंग भएको केश सुम्सुम्याउँछिन्। यसका साथै सबै जनसित खुशीसँग केही कुरा गर्छिन्। ती मानिस मदरसित ऋणि मात्र छैनन्, मदरलाई कुनै साधु-सन्तलाई जस्तो पूजा मात्र गर्दैनन्। तर तिनीहरूले मदरलाई आफ्नै आमालाई जस्तो माया र श्रद्धा गर्छन्–यो कुरा अरू भन्दा अर्कै एउटा महान् कुरा भन्न सकिन्छ।

मदर हाउसमा प्रेम र आनन्द बाहेक अन्य सांसारिक अथवा सुख-सुविधाका कुराहरू एकदमै कम्ति छन्। ईश्वरका सेवामा लागेका सिस्टरहरू गरीब-भन्दा गरीब भएर जीवन बिताउने आफ्नो वचनमा वचनबद्ध छन्। सिस्टरहरूबाट पाएका माया, प्रेम र सेवा उनीहरूका हृदयबाट र इच्छानुसार पाएको कुरामा कसैले रतिभर पनि शंका गर्दैनन्। यस प्रकारको सेवा कार्य गर्ने उत्साहको एउटा सानो उदाहरण यस्तो छ–

मदरकी एकजना सिस्टर डाक्टरी परीक्षामा सारा विश्वविद्यालयमा प्रथम श्रेणीमा आइन्। तब उनलाई सुवर्ण पदक दिइयो। त्यो पदक उनले मदरलाई देखाइन्। मदर खुशी भइन्। तर उनले भनिन्–'तिमी गरीबहरूको बीचमा काम गर्न जाँदैछयौ। यसकारण यो पदक तिमीलाई काम लाग्दैन। बरू अरू कसैले पावस् हैन?'

मदरका कुरा सुनी सिस्टरले कति पनि नहिच्किचाइ पदक फर्काइदिइन्। पदक अर्को डाक्टरलाई दिइयो। त्यो पदक पाउने डाक्टरले पदक आफ्नो कोठामा झुण्डाएर राखेका छन्। उनी त्यो पुरस्कार भन्दा पनि बड़ी मदर टेरेजा अनि उनको स्वार्थहीन सिस्टरसँग रहेको आफ्नो सम्बन्धमा गर्व गर्छन्।

## एउटा उपहार संसारलाई

मदर टेरेजाको ईश्वरप्रति अटुट विश्वास छ। यसमा कुनै शंका छैन। यही कुरा उनकोनिति ईश्वरको उपहार भएर रहेको छ। उनले यस्ता ससाना घटनाहरूको उल्लेख गर्छिन् जसले ईश्वरप्रतिको उनको अटुट विश्वास अनि ईश्वरले पनि उनलाई कहिल्यै निराश नबनाएका कुरा पुष्टि हुँदछ।

एकपल्ट एक जना पादरी सन्त जोसेफको धार्मिक भोजका निम्ति चन्दा उठाउँदै थिए। उनी मदरकोमा पनि आइपुगे। मदरले एउटा टीनको बाकास खोलिन्। त्यहाँ केवल एक रुपियाँ मात्र थियो। यस कुराले मदर दु:खी भइन्। तब उनले सन्तको एउटा सानो चित्र बाकसमा राख्दै भनिन्–'यो चित्र अब त्यतिबेला मात्र निकाल्छु जब म उनलाई केही दिनसक्नेछु।'

जब बिहान भयो एक जना सिस्टरले मदरलाई एउटा लिफा थमाइन्। त्यो लिफा मदरका निम्ति थियो। जब मदरले लिफा खोलिन् त्यहाँ एक सय रूपियाँको नोट पाइन्। यो देखेर मदरले हाँस्तै भनिन्–'हेर, त्यो एक रूपियाँको नोट एक सयको भएर आयो। अब सन्त जोसेफ मेरो बाकसबाट निक्लन सक्छन्।'

मदर टेरेजालाई आफ्नो सेवा कार्यका निम्ति चाहिएका साना-ठूला कुराहरू पूरा गर्न धेरै लामो यात्रा गर्नुपरेको छ। तर अब ता पैसा आउँछ। यति हुँदा हुँदै पनि मिशनरिज अफ् च्यारिटीले गर्न चाहेको सबै काम गर्न सो पैसा मनग्गे हुँदैन। गरीबीले मान्छेलाई दुःखी, टीठलाग्दो अर्थात् दयनीय बनाउँदैन। भारत जस्तो गरीब देशमा भएको सम्पन्नता अति शक्तिशाली र सम्पन्न देशहरूमा भएको गरीबी विषय मदर को विचार यस प्रकार छ–'हामीबीच भएको भौतिक अर्थात् धन-सम्पत्ति विषयको गरीबी मात्र हो। सबैभन्दा डरलाग्दो गरीबी मान्छेले एकलो हुनु वा एकलोपनको अनुभव गर्नु हो। यो समस्या हामीमा छैन। तर यस समस्याले पश्चिमी देशका धेरै मानिसलाई सताएको छ। एउटा अन्तर्वार्तामा मदरले भनेकी छ–'आजको युगका मानिस माया र प्रेमको भोका छन्। यसैकारण हामी इंगलैण्ड, अमेरिका, अष्ट्रेलिया जस्ता देशहरूमा पुग्न सकेका छौं। जहाँ रोजी-रोटीको समस्या छैन। तर त्यहाँका मानिस अति नै एकलो, घोर निराशा, तुच्छ, असहाय अनि वेकामे हुनको डरलाग्दो भावनाले पीड़ित छन्। तिनीहरू मुस्काउनसम्म बिर्सिसकेका छन्, मानव स्पर्शको सुन्दरता तिनीहरूले भुलिसकेका छन्। तिनीहरूलाई बुझ्न र इज्जत दिनुसक्ने कसैको खाँचो त्यहाँ छ।'

भारतवाहिर मदर टेरेजाको पहिलो फाउण्डेसन सन् १९६५ सालमा शुरू भएको हो। वर्तमानमा उनले संसारका विभिन्न भागमा टुहुरा-टुहुरी राख्ने घर, पाठशाला अनि अस्पतालहरू बसाएकी छन्। उनले गरीब, शिकिस्त विमारी, कोढ़ी, मानसिक रोगी, विकलांग अति कहिल्यै स्वस्थ्य नहुने बिमारीकोलागि घर, अस्पताल, सेवा केन्द्र सबै खोलिदिएकी छन्।

गोएटेमालामा भूइँचालो जाँदा त्यहाँका भूइँचालो पीड़ित मानिसकोलागि सेवाकेन्द्र खोलिन्। सिस्टर अफ् च्यारिटीले अष्ट्रेलियामा मादक अनि लागू पदार्थको सेवनमा लागूभएका मानिसहरूबीच काम गरे। सन् १९७३ सालमा प्यालिस्टायनबाट शरणार्थी भएका मानिसको देखभाल गर्न सिस्टरहरू गाजापट्टीमा बसे। यस्तै प्रकारले चारैतिरबाट गोला-बारूद बजरिरहेको बेरूतका सड़क र गल्लीहरूमा भड़किरहेका नानीहरूलाई बचाई मदरले तिनीहरूलाई वास दिएकी छन्। यसप्रकार यस्ता काम भइरहन्छन्। जब पनि, जहाँबाट पनि सहायताको पुकार सुनिन्छ तब तब आवश्यकता परेका टाउँमा मदर आफ्नो मिशनरिज पठाएर त्यस पुकारलाई सुनिदिन्छन्।

मदर टेरेजा प्रायः भन्छिन्–'मेरा कार्य ता केवल एक थोपा मात्र हो जब कि माया र स्नेहको महासागर चाहिएको छ। यदि मैले त्यति गरिनँभने त्यस महासागरमा एक थोपा माया र स्नेहको कमी हुनेछ।'

मदर टेरेजालाई एक जना जीवित सन्तको रूपमा श्रद्धा गरिन्छ। दीन-दुःखीका आँखामा उनी साँच्चै मसीहा अर्थात् मुक्तिदाता हुन्। उनलाई दिइएको यस्तो उनकै प्रेरणादाता यीशू मसीहा हुन्। यसप्रकार यीशूका पाइलाहरू पछयाएर मदरले एक जना साधारण मानिस मानव आशाको केन्द्रबिन्दु कसरी बन्नसक्छ भन्ने प्रमाण पेश गरेकी छन्।



Laser typesetting by M/s Paragon Enterprises, Darayaganj, New Delhi - 110002
and printed at Tara Art Printers, Sector V, NOIDA

